# विषय-सूची

---

फोटो कम्पोजिंग – **दुर्गा ग्राफिक्स**, पड़ाव, वाराणसी फोनः ३३९२८९

# अथ आशौच्र निर्णय

(१)

श्रीनारायण ब्रह्मका चरणमा भक्ती धरौं सर्वदा,
आफ्नू वैदिक धर्म्मकर्म कुलको आचार पालौं सदा।
यो संसार छ कर्मजालहरूले जेलीयको जङ्गल,
बाटो पक्रि हिंडेर मात्र यसमा होला पछी मङ्गल॥

(२)

हाम्रा पूर्वज ती ठुला ऋषिमुनी जो शक्तिशाली थिए,
त्यस्ताले व्यवहारका विषयको जो मार्ग तोकीदिए।
त्यै हो, मार्ग-विधी निषेध कहियो जो शास्त्रमा कर्मको,
तस्मात् कर्म विचारपूर्वक गरौं त्यै मूल हो धर्मको॥

(३)

सोही कारण धर्मसिन्धुहरूमा हेरेर जो दिखियो,
जूठो, सूतक बार्नलाई सजिलो पारेर यो लेखियो।
भन्छन् जन्मनुलाइ सूतक, मरेकालाइ जूठो भनी,
जूठो सूतक शास्त्रका नियमले हो बार्नुपर्ने पनि॥

(४)

जन्माशौच (सूतक) निर्णय :-

गर्भस्राव भए तुहे हुँदि छः मैह्नासम्म आमाकन,
जत्ती मास छ उत्ति रोज नछुनू आशौच बार्नू भन।
न्वाहे शुद्धि भए सपिण्डि र पिता चौथा महीनातक,
मैह्ना पाँच, छः मा भए त तिन दिन् लाग्ने भयो सूतक ॥

(५)

चारै वर्णविषे बराबर छ यो नीती छ मैह्नातक,
सातौंदेखि उता त लाग्छ सबमा पूरा-पूरा सूतक।
पूरा यो दश, बाह्र, पन्ध्र तिस दिन् बारून् क्रमैले अब,
ब्राह्मण, क्षत्रिय, वैश्य, शुद्ध अथवा बारून् दशै दिन् सब॥

(६)

आमालाई छुनू हुँदैन दश दिन् एघारदेखिन् छुनू
त्यै दिन् शुद्ध भएर देव, पितृको सत्कार्य गर्ने हुनू।
पैदा पुत्र भए त बीस दिनमा, छोरी भए तीसमा,
सुत्केरीकन कार्य गर्न अधिकार् देखिन्छ शास्त्रादिमा॥

(७)

बाबू, सौतिनी मातृल जब सचैल स्नान गर्छन् अनि,
छोए दोष हुँदैन, नाल रहँदै सुत्केरिलाई पनि।
नान्दीश्राद्ध र जातकर्म गरनू, दानादिहेरू दिनू,
नालच्छेदनको छ सोह्र घडिको अब्धी विचारीलिनू॥

(८)

कर्मै मात्र नगर्नु सूतकविषे पर्दैन छोड्नू अरू,
माला, चन्दन, ढोग, भेट, कपड़ा, खाने-पिने चीज्हरू।
छैंटीका दिन पूजनादि शिशुका निम्ती हुने कर्ममा,
दोषी कोहि हुँदैन ब्राह्मण, पिता लीने-दिने धर्ममा॥

(९)

पुस्ता सात र सात, सात गरि एक्काईस पुस्तातक,
पैह्ला सात सपिण्डि भाई बुझ्नू दोस्त्रा समानोदक।
तेस्त्रा सात सगोत्रि जान्नु, दश दिन् तीन् दिन् र एकै दिन,
जूठो, सूतक बार्नु येहि क्रमले राम्-राम् अरूमा भन॥

(१०)

जन्मेमा शिशु प्राण-हीन दश दिन, नालै नकाटी मरे,
तीन् दिन् लाग्छ सपिण्डिलाइ, जननीलाई दशै दिन् परे।
काटीएपछि नाल बालख मऱ्यो दश् रोजभित्रै भने,
पूरा सूतक लाग्छ बार्नु सबले, लाग्दैन जूठो भने॥

(११)

छोरी माइत बाबुकै घरमहाँ होली प्रसूती जब,
बारून् सूतक एक रोज निजका बाबू र भाई सब।
सुत्केरी यदि स्वामिकै घर भए लाग्दैन है सूतक,
बन्धूको पनि म्यादभित्र नसुने लाग्दैन यो सूतक॥

मृताशौच (जूठो) निर्णय –

(१२)

बार्नू ब्राह्मणले दशै दिन जुठो, बाह्रै त क्षत्रीयले,
वैश्यैले दिन पन्ध्र बारनु अनी, मैह्नाभरी शूद्रले।
बारून् लौ अथवा दशै दिन पुरा जुठो सबै वर्णले,
मान्नैपर्दछ धर्मशास्त्र, व्यवहार हिन्दू बसै हामिले॥

(१३)

आजैको दिन रात्रि जोडिकन त्यो मानिन्छ एकै दिन,
दिन्को दिन् भर, रात्रि रातभर हो 'सज्योति' भन्ने गुन।
आजैको दिनरात भोलि दिनभर् हो 'पक्षिणी' जान्नुहोस्,
जूठोमा दिनको हिसाब गरदा येही नियम् मान्नुहोस॥

(१४)

जूठोमा शुभ कर्म क्यै नगरनू अस्पृश्य हुन्छन् सब,
जूठो बारनुपर्छ जत्ति जसको लेखिन्छ सारा अब।
आमा सौतिनिलाई बाबुसरहै सर्वत्र लेखा गरे,
जूठो सूतक बार्नु कर्म नच्लेकाले त पर्दैन रे॥

(१५)

चारै वर्णविषे बराबर क्रिया सानो मरे सम्झनू,
मर्छन् बालक जो छः मासतकका थैंमा दबाईदिनू।
दाहा गर्नु र गाड्नू खुशि छ यो तीन् वर्ष येता भए,
चूडा होस, नहोसदाह गरनू तीन् वर्ष ऊता भए॥

(१६)

छोराको व्रतबन्ध कर्म नहुँदै जैले मरे तापनि,
आंमा, बाबु सपत्नि मातृहरूले तीन् रात्रि बार्नु अनि।
दस् दिन्देखि उता सपिण्डिहरूले न्वाहून् छः मैह्नातक,
त्यस्देखिन् पछि बार्नु एक दिन लौ तीन वर्ष पुग्दातक॥

(१७)

त्यस्का बाद त्रिरात्रि कर्म्म नचले बारून् सपिण्डिहरू,
न्वाहुन् सोदकले त कर्म गरनू पर्दैन केही अरू।
कन्याको व्रतबन्धको विषयमा बीहा भनी सम्झनू,
शूद्रैको पनि कर्म ब्याह बुझ्नू या सोह्र वर्षै दिनू॥

(१८)

एकै हो विधि जान्नु कर्म नचलेकाको सबै वर्णको,
त्यस्तैबालक ख्वाउनू अरू विधी छैनन् क्रिया-कर्मको।
जूठो यो अतिक्रान्त भो यदि भने लाग्दैन भन्ने गुने,
बारून् तीन् दिन लौ पिता र जननीले वर्षभित्रै सुने॥

(१९)

छोरीको दिन एक लाग्दछ छः मैह्नासम्म त्यस्देखि ता,
आमा बाबु, सपत्नि मातृहरूले तीन् रोज बार्नू उता।
तीन् पुस्तातकका सपिण्डिहरूले तीन् वर्षतक न्वाहुनू,
त्यस्देखिन् पछि एकरात्रि जबतक बाँकी छ वाग्दान हुनु॥

(२०)

स्नानै मात्र गरून् विवाह नभएकीको समानोदक,
कन्याको परदैन बार्नु अरूले जूठो सगोत्रीतक।
बाग्दान्देखि उता विवाह नहुँदै मर्दा त तीनै दिन,
माईती वर, यी दुवै तरफका बारून् सपिण्डी जन॥

(२१)

छोरी ब्याह भएकि माइतमहाँ मर्दा त तीनै दिन,
जूठो लाग्दछ दाजु भाइ र अरू सापत्न भाईकन।
काकालाइ[१] त लाग्छ एक दिन लौ एकाघरैमा भए,
बार्नू 'पक्षिणी' भाइले त[२] पतिकै घर्मा मरेको भए॥

(२२)

भाईको दिदी-बैह्निले र दिदी-बैह्निको दिदी-बैह्निले,
भाईले दिदी - बैह्निके सरि गरी बार्नू जूठो स्नेहले।
यै हो सौतिनी दाजु भाइ र दिदीबैह्नीहरूको पनि,
यो जूठो दश दिन् बितेपछि सुने न्वाहुन् नियम् हो भनी॥

(२३)

आमा, बाबु बितेपछी पछि जहाँ जैले सुने तापनि,
छोराले दश रात्रि नै नियमले आशौच बार्नू अनि।
छोराछोरिहरू त कर्म नचलेकाले पनी दश् दिन,
बार्नैपर्दछ पितृको त अरूको लाग्दैन सानाकन॥

---

१-जेठा, कान्छा बाबु । २- दाजु र भाइ दुवै।

(२४)

छोरी ब्याह भएकिलाइ दश दिन्भित्रै सुने तीन् दिन,
त्यस्देखिन् पछि लाग्छ 'पक्षिणि' भरी जैले जहाँ नै सुन।
बार्नू दत्तक[1] पुत्रले तिन दिनै जूठो दुवैतर्फको,
क्रीया गर्नुपऱ्यो भने त दश दिन् लाग्यो दुवैतर्फको ॥

(२५)

पितृको पनि ब्रह्मचारिकन ता लाग्दैन जूठो तर,
आर्को क्वै नभए क्रिया गरन ता लाग्यो अवश्यै कर।
दाहादी सब अन्त्यकर्म गरनू ती कर्म गर्दा पनि,
आशौचीकन छूनु हुन्न तिनको अन्नै नखानू पनि॥

(२६)

दाहा मात्र गरे त एक दिन हो पर्दैन बार्नू पुरा,
संध्योपासन अग्निकर्म गरनू आफ्ना नियम्का कुरा।
ब्रह्मचर्य समाप्त भैकन जसै होला समावर्तन,
बीतेको पितृको, सपिण्डिहरूको बार्नू जूठो तीन् दिन॥

(२७)

आमाकै सरि सौतिने जननिको आशौच छोरीकन,
छोरालाइ त लाग्छ दश् दिनपछी जैले पनी तीन् दिन।
काकाको[2] र जिबाबुको पनि जुठो लाग्दैन छोरीकन,
म्यादैमा सुनियो भने त यसमा श्रद्धा गरून् न्याहुन॥

---

१- धर्मपुत्र।२-जेठा, कान्छा बाबु।

( २८ )

मामा माइजु, सौतिने तरफका मामा मरे 'पक्षिणी'
मामा हुन् उपकारि नै यदि भने बार्नू तिनै दिन् पनि।
मामा जो व्रत-बन्धले रहितकाको बार्नू एकै दिन,
सौतेनीतिरकी त माइजु मरे दाग्दैन जूठो सुन।।

( २९ )

भानिज्को र सपत्न भानिज समेत्को लाग्छ तीनै दिन,
मामालाइ र सानिमा र ठुलिमालाई पनी तीन् दिन।
भानिज्को व्रतबन्धकर्म नभएकाको भए 'पक्षिणी'
भाञ्जीको सबले नुहाउनु फगत् लाग्दैन जूठो भनी।।

( ३० )

बाजे मावलिको त्रिरात्र र बज्यैको हो भने 'पक्षिणी'
नातीको तिन रात्रि कर्म नचलेकाको भए 'पक्षिणी'।
जूठो नातिनिको जिबाबुकन ता लाग्दैन यो माननू,
नाती, नातिनि, छोरिका तरफका भन्ने पनी जाननू।।

( ३१ )

सासूको ससुराजिको तिन दिनै आशौच बार्नू अनि,
पैले छोरि मरेर स्नेह नभएकाको भए 'पक्षिणी'।
ज्वाईं को तिन रात्रि बार्नु ससुरालीका घरैमा भए,
एकै रात्रि कि स्नान मात्र गरनू अन्यत्र काहीं भए।।

( ३२ )

सानीमा, ठुलिमा, फुपूहरू मरे लाग्यो जुठो 'पक्षिणी'
तो आफ्नै घरमा मरे यदि भने बार्नू तिनै दिन् पनि।
सौतेनी पुफुको त स्नान गरनू, मर्दा भदो स्नान हो,
साला, सालि मरे त एक दिन हो, साना[१] भए स्नान हो॥

( ३३ )

जो आफ्ना तिरका र बाबुतिरका, आमा तरफ्का अनि,
फुपूका सुत, सानिमा[२] सुत र मामा का त छोरा पनि।
हुन् 'बन्धुत्रय'[३] जान्नु लाग्छ यिनको मर्दा जुठो 'पक्षिणी',
यी आफ्नै घरमा मरे त खुशिले बार्नू तिनै दिन् पनि॥

( ३४ )

काकाका फुपु, सानिमा र ठुलिमाका छोरिहेरू अनि,
मामाका पनि छोरि, छोरिहरुका छोरी, भतीजी पनि।
यस्ताको र अरू पनी अलि अलि-सम्बन्ध पर्ने जति,
मर्दामा त सचैल स्नान गरनू धैरे बताऊँ कति॥

---

१. कर्म नचलेका। २. सानिमा ठूलिमा। ३. आफ्ना पुफूका छोरा, सानिमा, ठुलिमाका छोरा, मामाका छोरा, बाबुका-फूपूका छोरा सानिमा ठुलिमाका छोरा, मामाका छोरा, सानिमा ठुलिमा मामाका छोरालाई 'बन्धुत्रय भन्दछन्'

( ३५ )

छोरो दत्तक्को[१] दुवै तरफका माता, पिता तीन् दिन,
बारून् एक दिनै दुवै तरफका भाई सपिण्डी जन।
छोरा नाति त धर्मपुत्रतिरका जन्मे मरेका तब,
जूठो सूतक लाग्छ एक दिन नै बारून् सपिण्डी सब॥

( ३६ )

त्यो आफ्नै कुलको छ दत्तक भने मान्नू कुलैको रिती,
जान्नूपर्छ सपिण्डि, सोदक, सगोत्रीको, अघीकै स्थिति।
बार्नु दत्तक पुत्रले बखतमा आशौच एकै दिन,
आफ्ना गोद लिने दुवै तरफका मर्दा सपिण्डि जन॥

( ३७ )

सात् पुस्ता व्रतबन्धले सहितका भाई सपिण्डीहरू,
मर्दामा दस रात्रि लाग्दछ जुठो बारून् सपिण्डी अरू।
एकटै गुरूबाट मन्त्र सुनने चेलाहरू जो छन्,
आपुस्मा गुरूभाइको पनि जुठो बारून एकै दिन॥

( ३८ )

आचार्य व्रतबन्ध कर्म गरि जो वेदै पढाई दिने,
फेरी मन्त्र सुनाउने त गुरू एकै गाउँमा हो भने।
तिन्को तीन् दिन बार्नु लाग्दछ जुठो अन्तै मरे 'पक्षिणी'
सारा वेद पढाउने र सहपाठी को पनी 'पक्षिणी'॥

---

१. धर्मपुत्र।

(३९)

केही वेद पढाउने गुरु 'उपाध्यायः' कहिन्छन् अनि,
वेदाङ्गादि[1] पढाउने गुरु 'अनूचानः' कहिन्छन् पनि।
यिन्को बारनु एक रात्रि र अनि स्त्री, पुत्र आचार्यका,
मर्दामा पनि एक रात्रि बुझ यो आचार हुन् आर्यका॥

(४०)

शिष्यैको व्रतबन्ध गर्दिइ पढाएको भए तीन् दिन,
अन्तै भो व्रतबन्ध खालि पढनेको बार्नु एकै दिन।
प्रोहित्को यजमानको पनि तिनै रात्री जुठो बारनू,
छोडेका यजमान प्रोहित भए ता एक रात्री लिनु॥

(४१)

पूरा वेद पढेर अर्थ बुझने कर्मिष्ठ हुन् 'श्रोत्रिय'
त्यस्ताको तिन रात्रि बार्नु नजिकै बस्ने हउन् जो प्रिय।
गाऊँ भिन्न भएर मैत्रि नभए बारोस एकै दिन,
बारे हुन्छ सवर्ण मीत मरदा आशौच एकै दिन॥

(४२)

जुठो लाग्दछ एक रात्रि घरमा नाता नलाग्ने मरे,
बार्नूपर्छ त्रि-रात्रि नै कम जुठो लाग्ने घरैमा मरे।
गाऊँ को मुखिया मरे हुँदि जुठो 'सज्योति' बारीलिनू,
राजाको पनि देश-वासिहरूले 'सज्योति' नै बारनू॥

---

१. व्याकरण, ज्योतिष आदि शास्त्र।

(४३)

गाऊँ का बिचमा रहन्छ जबतक् मुर्दा जुठो लाग्दछ,
फ्यांकीदैन पशू मरे जबतलक् घर्मा जुठो लाग्दछ।
आशौचै दश रात्रि लाग्छ द्विजका घर्मा मरे कुक्कुर,
घर्मा शूद्र मऱ्यो भने पनि पऱ्यो आशौच मैह्नाभर॥

(४४)

जूठो लाग्दछ दूइ मास घरमा आइ पतित् क्वै मरे,
म्लेच्छादी घरमा मऱ्यो पनि भने हो चार मैह्ना अरे।
स्वामीको पनि बार्नु जाति-अनुसार् आशौच दासादिले,
बानप्रस्थ, यती मरे सब सपिण्डी शुद्ध हौ स्नानले॥

(४५)

शूरो सन्मुख युद्धमा लडि मरे भैजान्छ स्नानै गरे,
एकै रात्रि त लाग्छ चोट रणमा लागी पछाडी मरे।
चोटैले तिन दिन् पछी यदि मरे आशौच तीनै दिन,
सातौं रात्रि बितेपछि मरे ता लाग्छ दशै दिन॥

(४६)

आफू खूशि प्रयाग तीर्थहरूमा डूबी मरे न्वाहुनू,
प्रायश्चित्त निमित्तमा जलि मरे एकै निशा बारनू।
कुष्टीका पिरले जली डुबि मरेमा लाग्छ तीनै दिन,
हो कारागृहमा मरे त उसको आशौच एकै दिन॥

(४७)

धोकाले कि प्रमादले कि करले या दैवसंयोगले,
गाई, ब्राह्मण चोर, सर्प, जल, अग्नि सिंह, व्याघ्रादिले।
मारीने जनको त लाश नभए पुत्ला खड़ा पारनू,
प्रायश्चित्त गरेर दाह गरनू, जूठो पूरा बारनू॥

(४८)

दाह अञ्जलि औंसीमा-

मुर्दा उत्तम जातिको नछुनु आपत्मा पनी शूद्रले,
दाहा गर्नु पनी निषेध छ चिताको, शूद्रका अग्निले।
रात्रीको मृत रात्रिमै र दिनको दाहा दिनैमा गरे,
दाहा गर्नु अमन्त्र कर्म नचलेकोले त गर्नूपरे॥

(४९)

छोरी, बैह्नि, दिदी र मावलि जिबा ज्यामा, सगोत्री अनि,
जो आफ्ना कुललाइ अञ्जलि दिनू आचार्यलाई पनि।
मामा, भानिज, सानिमा, फुपु अरू जो अन्य गोत्री भए,
तिन्लाई दिनु अञ्जली कि नदिनू आफू खुशीमा भए॥

(५०)

आखीरी मिति सोह्र, बाइस र चौबिस् वर्ष सम्मन् पनि,
ब्राह्मण, क्षत्रिय, वैश्य कर्म नचले का 'व्रात्य' हुन्छन् यिनी।
यस्ता व्रात्य, व्रती, नपुंसक यती[१] जातीपतित् बैगुनी,
यस्तालाइ हुँदैन अञ्जलि दिनू, पर्दैन यिन्ले पनि॥

---

१. संन्यासी।

(५१)

मुर्दा दाह गरीसकेपछि जनानाले अगाडी हुनू,
खल्को हाल्नु, सचैल अञ्जलि दिनू फेरी पनी न्वाहुनू।
घीऊ, अग्नि छुनू, मिले त निमका पत्ता चपाईलिनू,
काँढा - माथि धरेर पत्थर उसैमा टेकि फिर्ता हुनू॥

(५२)

मर्नेको गुण-गान गर्नु फिरदा जानू र घर्मा अनि,
छोई भस्म, सँगार टेकि पसनू त्यो छाक छोड्नूपनि।
बार्नू शुद्ध भई जुठो, नगरनू रीतीथिती खण्डन,
गर्नूपर्छ दशाह भाइहरूले चोखो हुँदा मुण्डन॥

(५३)

कर्ताले पनि गर्नु मुण्डन सफा दाह्री, जुँघा खौरनू,
न्वाहूनू, उपवास गर्नू, नछुनू दश् रात्रि एक्लैहुनू।
पैले पिण्ड दिंदा जहाँ जुन विधी जो वस्तु अन्नादिले,
थालेको छ उहीं उसै गरि गरून् दश् रोज त्यै वस्तुले॥

(५४)

औंसी पर्न गए त पाँच दिनका येता भए पर्खनू,
ऊता पर्न गए खिचेर ढिकुरो त्यै औंसिमा फोरनु।
आमा, बाबु मरे सरासरि गरे औंसी परेमा पनि,
[1]दोमासे ढिकुरो नपार्नु कुलको हानी छ यस्मा भनी॥

---

१. दस दिनका बीचमा औंसी पर्‍यो भने दोमासे हुन्छ।

(५५)

दाहाका दुइ, तीन, चार अथवा सातौं रोजमा,
अस्थीसञ्चय श्राद्ध गर्नु र पछी सेलाउ गङ्गाजिमा।
एघारौं दिन श्राद्ध षोडश र बाह्रौंमा सपिण्डी पनि,
गर्नु, ब्राह्मणलाइ दान दिनु यो हो धर्म आफ्नू भनी॥

(५६)

अतिक्रान्त (बितेको) आशौच -

जन्मेको दश रात्रिवाद सुनिए लाग्दैन त्यो सूतक,
बाबूले त तथापि स्नान गरनू देखिन्छ आवश्यक।
मर्नेको व्रतबन्ध कर्म नचले काको जुठो भो अनि,
मामा, भानिज अन्य गोत्रतिरका नाताहरूको पनि॥

(५७)

जूठो जो 'तिन रात्रि' 'पक्षिणी' भनी देखिन्छ जस्को जति,
त्यो बीतेपछि, थाह भो यदि भने पर्दैन बार्नू रती।
त्यस्तै सोदक आदिको तिनदिने जूठो बितेको सुने,
गर्नू पर्दछ स्नान ता पछि पनी पर्दैन बार्नू भने॥

(५८)

छोरीले तिन रात्रि मातृपितृको दश् रात्रिभित्रै सुने,
बारून् त्यस्पछि 'पक्षिणी' भरि भनी यो बात पैल्यै भनें।
छोराको तिन रात्रि दश् दिनपछी जैले सुने तापनि,
जूठो लाग्दछ जान्नु यै तरहले सौतेनि माको पनि॥

(५९)

जूठो जो दश रात्रिको दश दिनैभित्रै सुनेमा तब,
जो बाँकी दिन बार्नु लौकिक क्रिया गर्नू त्यसैमा सब।
दश् रात्री बिति तीन मासतकमा सूने त तीनै दिन,
बारून्, त्यस्पछि 'पक्षिणी' छः महिनासम्मन् सपिण्डी जन॥

(६०)

त्यस्देखिन् पछि एकरात्रि बुझनू नौ माससम्मन् अनि,
नौ मैह्नापछि वर्षभित्र त सुने सज्योति बार्नू पनि।
यै जूठो दश रात्रिबाट सुनियो देशान्तरैमा भने,
बार्नू लौ तिन रात्रि मात्र यदि पैंतालीसभित्रै सुने॥

(६१)

त्यस्देखिन् पछि लाग्छ 'पक्षिणि' जुठो सूने छः मैह्नातक,
नौ मैह्नातक एक रात्रि र अनी 'सज्योति' वर्षैतक।
ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्रहरूको लेखा क्रमैले गर,
बीस्, चौबीस्, तिस, साठि योजन पर त्यो हुन्छ देशान्तर॥

(६२)

जान्नूपर्दछ एक योजन पुरा चार् कोशको हो भनी,
संख्यामा दुई, एक योजन कतै कम्ती भएमा पनि।
ठूला पर्वतले ठुला नद-नदीले छेकिएको भए,
भाषा भिन्न भए हुंदी तिनीहरू देशान्तरैमा गए॥

(६३)

आमा, बाबु र पत्निको र पतिको सौताहरूको पनि,
दस् रात्रीपछि लाग्छ दस् दिन जुठो जैले सुने तापनि।
जूठो लाग्छ सपिण्ड भाइहरूको सारा जहानैकन,
अर्को गोत्र भए त बार्नु उसले जस्को छ नाता जुन॥

(६४)

जूठो यो अतिक्रान्त वर्ण सबमा जान्नू समानै भनी,
जूठो सूतक रात्रिको त यसरी लेखा जगाऊ पनि।
रात्रीको तिन भाग गर्नु र पछिल्लो भाग अर्का दिन,
पैलेका दुइ भाग काम परदा जोडनू अघिल्लै दिन॥

(६५)

अग्नीहोत्रि-सिवाय दाह अरूको जैले भए तापनि,
जूठो बारनुपर्छ जुन्दिन मऱ्यो त्यै रोजदेखिन् गनी।
दाहाका दिनदेखि लाग्दछ जुठो जो अग्नीहोत्री मरे,
लेखा त्यै दिन गर्नु दाह-अघिको लाग्दैन जूठो अरे॥

(६६)

जूठो सूतक खापिएमा-

जूठो सूतक खापिए त अघिको नै बारनूपर्दछ,
पैलेको मितिसम्म बार्नु पछिको तेसैमहाँ टर्दछ।
पूरा सूतकमा त सूतक पुरा वा सानु नै खापियो,
पैलेकै सँग शुद्ध हुन्छ पछिको तेसैमहाँ गाभियो॥

(६७)

पैले सूतक पर्न गो अनि जुठो सानू ठुलो क्वै जुझे,
जूठो बारनुपर्छ सूतकसँगै जाँदैन जूठो बूझे।
जूठोमा यदि जन्म-सूतक परे जूठोसँगै सिद्धियो,
चोखिन्छन् अरु बन्धु, सूतक फगत् सुत्केरिलाई रह्यो॥

(६८)

सानू सूतकमा त सूतक ठुलो आए ठुलै बारनू,
जूठो सानुविषे ठुलो यदि परे ठूलै जुठो बारनू।
पैलेकै सँग शुद्ध हुन्छ पछिको सानू कि उत्रै भए,
जूठो सूतक सानुले त पछिको जाँदैन ठूलो भए॥

(६९)

जूठो पक्षिणि, तीन रात्रिहरूमा दस् रात्रिको सूतक,
आयो पर्न भने त सूतक पुरा बार्नू दशै दिन्तक।
जूठोको दस रात्रिबाद सुनिए ता खापिएको पनि,
जूठो बारनुपर्छ जान्नु अघि नै हो खापिएको भनी॥

(७०)

जूठोको सूतक सिद्धिने दस दिनैका रातमा दस्दिने,
आर्को खापिन गो भने अरु दुई रात्री बढाई दिने।
रात्रिको पनि आखिरी समयमा चौथा प्रहर्मा भए,
तीनै रात्रि बढाइ बार्नु अरु साना ता उसैमा भए॥

(७१)

आखीरी दुइ तीन रात्रि थपमा तेस्रो ठूजो खापिए,
बार्नू त्यै पछिको पुरा दस दिनै, पर्दैन साना भए।
मर्दा अग्नि दिने, क्रिया गरिलिने, सुत्केरिलाई पनि,
जूठो सूतक जान्नु लाग्दछ पुरा मनैमा गुनी॥

(७२)

यो ता हो अरु भाई-बन्धुहरुको आशौच बार्ने कुरा,
बा, आमा, पति पत्निको त यसरी जाँदैन बार्नू पुरा।
आमाकै सँग शुद्ध हुन्छ पछि बाबूको जुठो खापिए,
बाबूका सँग पक्षिणी थपिदिनू आमा पछीकी भए॥

(७३)

बाबूको दस दीनको दीन बिती आमा त राती मरे,
दूबै रात्रि बढ़ाइ बार्नू, तिन दिन् चौथा प्रहर्मा परे।
एकै रोज कि दुइ रोज पछि नै साथै सती भै मरे,
बाबूकै सँग शुद्ध हुन्छ यसमा पर्दैन क्षण्नू अरे॥

(७४)

रोकीदैन क्रिया त सूतक परे गर्नू सरासर् अनि,
जन्मे बालक जातकर्म्म गरनू जूठो परेमा पनि।
आमाको पनि आखिरी दिन थपेकोमा पिताको पनि,
एघारौं दिनका क्रिया गरिलिनू रोक्तैन जूठो भनी॥

( ७५ )

छूवाछूतको–

जातैको शवमा छुवाछुत भए सज्योति आशौच छ,
कम्ती जात भए विचार गरि क्यै बेसी पनी लाग्दछ।
जस्ले छुन्छ उही अलग्ग रहनू आशौच लागेतक,
घर्का चीज जहानको त यसमा क्यै छैन वास्तातक॥

( ७६ )

आफ्ना जाति, विजातिको पनि मलामी भै गए न्वाहुनू,
छूनू अग्नि, घिऊ र फेरि नदिमा न्वाहेर चोखो हुनू।
ब्राह्मण्ले यदि शूद्रका पछि गए जूठो छ तीनै दिन,
छूनू अग्नि घिऊ र गर्नु नदिमा स्नानादि चोखो हुन॥

( ७७ )

बोकेमा त सजातिलाइ उसकै खाएर घर्मा बसे,
जूठो हो दस रात्रि बार्नु, तिन दिन् खाएर अन्तै बसे।
अन्तै खाइ उहीं बसे पनि जुठो बारोस तीनै दिन,
खानू बस्नु अलग्ग नै छ त भने ता लाग्छ एकै दिन॥

( ७८ )

अन्तैको शव बोकि अन्त छ भने 'सज्योति' बारोस त्यो,
ज्याला लिन्छ भने पनी दस दिनै आशौच्च बारोस त्यो।
अर्को जाति उठाउनेकन उसै जात्को जुठो लाग्दछ,
ज्याला लिन्छ भने त झन् दुइगुना बेसी पनी लाग्दछ॥

(७९)

धर्मार्थै द्विजलाइ बोकि खुशिले दाहा गरेको भए,
धेरै पुण्य लुटेर ती सुजन ता न्वाहे कि चोखा भए।
धर्मैखातिर शूद्रलाई त लगे आशौच एकै दिन,
धर्मैनिम्ति अनाथका पछि गए दोषिन्न त्यस्तो जन॥

(८०)

आफै तुल्य र आफुदेखि बढताका जातिका स्नेहले,
सारा अन्त्यक्रिया गरे त उसकै बाँधिन्छ आशौचले।
बोक्नेकै सरि दाह मात्र गरनेलाई पनी लाग्छ रे,
धर्मार्थै पनि शूद्रलाइ द्विजले दाहा नगर्नू अरे।

(८१)

आमा, बाबु, गुरू र मावलि जिबा, आचार्य छोडी अरू-
लाई बोक्नु छुनू गरे पतित हुन्छन् ब्रह्मचारीहरू।
तिन्को त्यो व्रत लोप हुन्छ बुझनू संस्कार फेरी पनि,
गर्नैपर्छ तसर्थ दूर रहनूस हौं ब्रह्मचारी भनी।

(८२)

बोके सोदकको दशाह छ जूठो दाहा गरे तापनि,
अस्थी-सञ्चयसम्म न्वाहुनु सजाती-निम्ति रोए पनि।
रोयो ब्राह्मण शूद्र-खातिर भने आशौच तीनै दिन,
अस्थी सञ्चयका उता यदि भए ता लाग्छ एकै दिन॥

(८३)

पैले स्नान गरेर बारनु जुठो जो लाग्छ अब्धीतक,
फेरी न्वाहु र शुद्ध हुन्छ यसमा स्नानै छ आवश्यक।
जूठोमा भुलचूक मैथुन गरे जूठो विचारीकन,
प्रार्याश्चित्त गरोस शास्त्रविधिले त्यो दोष मेटाउन॥

(८४)

आपत् केही नभै बुझ्री बुझि जुठोको अन्न खानेकन,
जूठोलाग्दछ उत्ति खान्छ जसको बाँकी छ जत्ती दिन।
जानी जानी पनी विपत्ति परदा खाए सुधारी मन,
गायत्री जप धेर गर्नु, भुलले खाए त राम् राम् भन॥

(८५)

आशौच नलाग्ने–

जूठो सूतक ब्रह्मचारि र यतीलाई नलागे पनि,
गर्नू स्नान सचैल पितृ मरदा हो धर्म आफ्नू भनी।
दाहादी अरू अन्त्यकर्म गरने अर्को नहोला जब,
जो कर्तव्य छ ब्रह्मचारिहरूको पैले बताएँ सब॥

(८६)

प्रायश्चित्त-निमित्त क्वै व्रत अनुष्ठानादि गर्नेकन,
वानप्रस्थ र मर्न आतुर भई दानादि गर्नेकन।
दुर्भिक्षादिक देशविप्लव ठुलो आपत्ति पर्नेकन,
अन्नक्षेत्र खुलाउनेकन र गादीवाल राजाकन॥

( ८७ )

ठूलो यज्ञ गराउनाकन बसेको मुख्य प्रोहित्कन,

तेसैमा यजमान दीक्षित हुने जो मुख्य कर्ताकन।

भोकै आपतमा कुटुम्ब परनाले दान लीनेकन,

राजाको भय रोगको भय हुँदामा शान्ति गर्नाकन॥

( ८८ )

नाडी हेरन वैद्यलाइ र दवाई खान रोगीकन,

नान्दीश्राद्ध गरेपछि व्रत-प्रतिष्ठा तीर्थ उद्यापन।

चूडा भो व्रतबन्ध, ब्याह र ठुला यज्ञादि गर्नाकन,

जूठो सूतक लागदैन बूझनू गर्नू नरोकीकन॥

( ८९ )

आपत्‌बाट छुटेर कार्य सकिए बाँकि जुठो बारनू,

बीतेको छ दशाह ता पछि तिनै रात्री पनी बारनू।

पक्वान्नादिक चाड-निम्ति पहिले खाने पिने जो बने,

जूठोमा बिटुलो हुँदैन अरुले दीएर खाए भने॥

( ९० )

खाँदाखेरि जुठो सुने त मुखको गाँसै उगेलीदिनू,

गर्नू स्नान र बार्नू गाँस नथुके एक् रोज भोको हुनू।

गर्नू सूतकमा भने ग्रहणका श्रद्धा बढाईकन,

धेरै पुण्य छ स्नान दान गरदा त्यै हो पछीको धन॥

(११)

जूठो सूतकमा पनि ग्रहणमा, संक्रान्तिका पर्वमा,
गर्नू दोष हूँदैन पुण्य छ ठुलो स्नानादि दानादिमा।
नित्य स्नान र खान, आचमनमा खेती र घर्काजमा,
जूठो सूतक छैन संकट परेकाको त उद्धारमा॥

(१२)

लाजा, तेल, मिठाइ, फूल, फल, मासू, नून मिश्री, चिनी,
ऊखू, साग, दहीं, घिऊ, दुध, मधू, पानी, दवाई पनि,
घर्माको सब शुद्ध हुन्छ, बिटुलो आशौचिका हातको,
हातैको पनि शुद्ध हुन्छ, किनदा त्यै वस्तु बाजारको॥

(१३)

बुद्धीपूर्वक पीरले कि रिसले क्वै सिद्धिका भ्रान्तिले,
नीतिशास्त्र-विरुद्ध सेखि, भयले बा लोभले मोहले।
अग्नीले, जल, शस्त्र, पत्थर, विशादीले र भौकै बसी,
फाल्हालीकन वा नदी-बिच पसी, पासो गलामा कसी ॥

(१४)

ठूलो वृक्ष चढी, इनार गहिरोमा खाँदिई जो मर्‍यो,
त्यस्ता मूर्ख ति आत्मघातिहरूको लाग्दैन जूठो गर्‍यो।
गोरू, सर्प र बाघ, भालू, गज आदि, चोर चाण्डालको,
फेला पर्न गई मर्‍यो यदि भने काम् छैन आशौचको॥

(१५)

ठूलो पातकि वा नपुंसक मरे लाग्दैन जूठो रती,
स्वामी-घातिनि नीच जातिसँग जाने गर्भ गर्ने खती।
स्वेच्छापूर्वक आत्मघात गरने, वेश्या हुनेको पनि,
यस्ता पातकिको मरे बुझिलिनू लाग्दैन जूठो भनी।।

(१६)

अपवाद-

ठूलो पातकि-जात धर्म कुलदेखिन् जो पतित् भै गिरे,
ती-बाहेक कुबुद्धिपूर्वक अरू जो आत्मघाती मरे।
त्यस्ताको त तुरून्त गर्नु कलिमा दोबर् बढाईकन,
प्रायश्चित्त र दाह गर्नु अनिमात्रै बार्नु जूठो भन।।

जुत्तला दाहको-

(१७)

अन्तै मृत्यु भएर लाश नमिले दस् रोजभित्रै त यो,
गर्नू पुत्तल दाह बाँकि दिनमै जूठो समाप्ती भयो।
बीतेमा दशरात्रि, दस् दिन पति, स्त्री, पुत्र, सौताकन,
जूठो लाग्छ, सपिण्डि भाइहरूले ता बार्नु तीनै दिन।।

(१८)

पैले दाह गरेर काश कुशको क्रीया समाप्ती गरे,
फेरि क्यै दिनबाद लाश अथवा अड्डी त फेला परे।
गर्नू दाह र पुत्र, पत्नि, पति, सौताले त तीनै दिन,
खाली बार्नु जुठो, क्रिया नगरनू, न्वाहूनू सपिण्डी जन।।

(९९)

अग्निहोत्रि भए त हाड पुतला जैले जलाए पनि,
जूठो बार्नू सपिण्डि भाइहरूले पूरा दशै दिन् गनी।
हड्डी लाश क्रिया सकेपछि पछि पाएर दाहा गरे,
बार्नैपर्छ सपिण्डिहेरु सबले जूठो तिनै रोज रे।

पञ्चक परेमा–

(१००)

भन्छन् पञ्चक कुम्भ, मीन दुइ राशीमा छँदा चन्द्रमा,
यस्मा मृत्यु भए त दुर्गति पऱ्यो होला खती बन्धुमा।
गर्नैपर्दछ शान्ति स्वस्ति यसमा हेरी बिचारीकन,
होला नत्र विनाश बन्धुजनमा नाशिन्छ धेरै धन॥

(१०१)

दाहा पञ्चकमा नगर्नु यदि गर्नू नै परे सम्झनू,
पाँचोटा पुतला बनाइ कुशका साथै जलाई दिनू।
गर्नू शान्ति अवश्य शास्त्रविधिले आशौचका अन्त्यमा,
आफ्ना सन्तति बन्धु–वर्ग कुलको कल्याण का निम्तिमा॥

(१०२)

पैले मृत्यु भएर पञ्चक परे दाहा त्यसैमा गरे,
गर्नू पुत्तलकर्म मात्र यसमा पर्दैन शान्ती भरे।
मृत्यु पञ्चकमा भयो तर बित्यो दाहा पछाडि गरे,
शान्ती मात्र गरोस पुत्तल–विधि पर्दैन यस्तो परे॥

(१०३)

आशौच बार्ने नियम-

गायत्री दश वार जप्नु मनमै मन्त्रै बिना न्वाहुनू,
प्रत्युत्थान नगर्नु मान्य जनमा पर्दैन ढोगीदिनु।
पूजा, तर्पण, वैश्वदेव प्रभृती जो नित्य नैमित्तिक,
काम्यादी पनि कर्म क्यै नगरनू आशौच हूँदातक॥

(१०४)

जूठोमा मह, मास, मासु, दुध, पूवा, नून, तैलादिक
केही आमिष खानु छैन, नुन खाए हुन्छ सीधेतक।
ऐना, चन्दन, हास्य, रोदन, जुवा, स्त्रीसङ्ग, उच्चासन,
त्याग्नू, सुत्नु चटाइमा जमिनमा, पर्दैन रोगीकन॥

(१०५)

रजस्वला सूतक-

हुन्छन् नारि रजस्वला यदि पुरा मैह्ना पुगेमा भने,
त्यस्ताको रज भो त सत्र दिनतक् न्वाहेर चोखा बने।
अट्ठारौं दिनमा त एक दिन, उन्नाईसमा दो दिन,
बार्नूपर्दछ, बीसदेखि त उता बारून तीनै दिन॥

(१०६)

जो नारी बिस रोजमै रज हुने बानी भएका छन,
त्यस्ताको रज देखिए त दस रात्री सम्ममा न्वाहुन।
एघारौं दिनमा त एक दिन, बाह्रौंमा भए दो दिन,
बार्नूपर्दछ, तेह्र देखि त उता बारून तीनै दिन॥